

(मुस्लिम समुदायका लागि)

# महत्वपूर्ण पाठहरू


प्रस्तुति:

**महामहिम शैख अब्दुल्लाह बिन बाज**

महामुफ्ती सऊदी अरब

अनुवाद:

**मो॰ अबुल्लैस 'सलफी'**

किंग सऊद यूनिवर्सीटी, रियाद (सऊदी अरब)



**आमन्त्रण तथा प्रदर्शन सहयोगी कार्यालय (बतहा)**

10/ 1424 H

66

COOPERATIVE OFFICE FOR CALL AND GUIDANCE

ردمك: ٩٩٦٠-٧٩٨-٦٠-٧

(मुस्लिम समुदायका लागि)

# महत्वपूर्ण पाठहरू

प्रस्तुति:

**महामहिम शैख अब्दुल्लाह बीन बाज़**

महामुफ्ती सऊदी अरब

अनुवाद:

**मो॰ अबूल्लैस 'सलफी'**

किंग सऊद यूनिवर्सीटी, रियाद (सऊदी अरब)

**आमन्त्रण तथा प्रदर्शन सहयोगी कार्यालय (बतहा)**

ⓒ المكتب التعاوني للدعوة والإرشاد وتوعية الجاليات بالبطحاء، ١٤٢٠هـ

فهرسة مكتبة الملك فهد الوطنية أثناء النشر

إبن باز، عبد العزيز بن عبد الله

الدروس المهمة لعامة الأمة / ترجمة محمد ابوالليث السلفي .- الرياض

٥٦ ص ؛ ١٢ × ١٧ سم

ردمك: ٧ـ ٦٠ ـ ٧٩٨ ـ ٩٩٦٠

(النص باللغة النيبالية)

١ـ الإسلام ـ مبادىء عامة　٢ ـ الثقافة الإسلامية　أ ـ السلفي، محمد ابوالليث (مترجم)　ب. العنوان

ديوي ٢١١　١٤٩٤ / ٢٠

رقم الإيداع: ١٤٩٤ / ٢٠

ردمك: ٧ ـ ٦٠ ـ ٧٩٨ ـ ٩٩٦٠

**COOPERATIVE OFFICE FOR CALL AND GUIDANCE IN AL-BATHA**

UNDER THE SUPERVISION OF MINISTRY OF ISLAMIC AFFAIRS, ENDOWMENTS, PROPAGATION AND GUIDANCE

P.O. BOX: 20824 - RIYADH: 11465

00966 - 1 — 4030251 — 4034517 — 4031587 — 4030142

FAX — 4059387

Lecture hall, Tel. + Fax: 00966 - 1 - 4083405

WWW.COCG. ORG

# विषयप्रसंग

# भूमिका

**الحمد لله رب العالمين، والعاقبة للمتقين، و صلى الله وسلم على عبده و رسوله نبينا محمد ، و على آله و أصحابه أجمعين –**

स्तूति र शान्ति प्रार्थनापछि,

यी संक्षेप शब्दहरू सर्वसाधारणले इस्लाम धर्मको विषयमा आवश्यक रूपले जान्नु पर्ने केहि कूराहरूका बारेमा छन्, जसको नाऊँ मैले “अद्दोरूसुल मोहिम्मह ले आम्मतिल उम्मह अर्थात् सर्वसाधारण मुस्लिम समुदायका लागि महत्वपूर्ण पाठहरू” राखेया छु ।

म यसबाट सबै मुसलमानहरूलाई लाभान्वित गरी मेरो तर्फबाट यसलाई कबूल गर्न अल्लाहको जुनाफमा प्रार्थना गर्दछु । वस्तुत: त्यो शक्ति नै महान कल्याण गर्ने हो ।

अब्दुल अजीज बिन अब्दुल्लाह बिन बाज ।

# महत्वपूर्ण पाठहरूको विधि सर्वसाधारण मुस्लिमहरूको लागि

## (पहिलो पाठ)

## सूरतुल् फातिहा र साना सूरहहरू

सूरतुल फातिहा र सकेसम्म केसारूस् सोवरबाट सूरतुल् जलज़लह (भूईंचालो अंश) देखि सूरतुन् नास (मानिस अंश) सम्म पाठको लागि पढ़ाउनु र सही गर्नु तथा आवश्यक बोधको लागि कण्ठ गराउनु र व्याख्या गर्नु ।

## (दोश्रो पाठ)

# इस्लामका अरकान (आधारशिला) हरू

### १- इस्लामका ५ आधारशिलाहरूको वर्णन

यसको पहिलो र ठूलो आधारशिला لا اله الا الله ، محمد رسول الله(लाइलाह इल्लल् लाह, मोहम्मदुर् रसूलुल् लाह) को साक्ष्यको वर्णन हो, त्यसको अर्थ-व्याख्या र لا اله الا الله (लाइलाह इल्लल् लाह) का प्रतिबन्धहरूको उल्लेखसहित ।

**यसको अर्थ हो** : (ला इलाह) अर्थात् अल्लाहको अतिरिक्त पूजिने अन्य सबैलाई नकार्नु, (इल्लल् लाह) अर्थात एउटा अल्लाह जसको कुनै साझा छैन त्यसको उपासनालाई स्वीकार्नु र सिद्ध गर्नु ।

**२- 'लाइलाह इल्लल्लाह' का प्रतिबन्धहरू निम्नलिखित छन्:**

१. अज्ञानतालाई नकार्ने ज्ञान

२. संदेहलाई नकार्ने विश्वास

३. शिर्क (मिश्रणवाद) लाई नकार्ने शुद्धता

४. झूठलाई नकार्ने सत्यता

५. द्वेष-इर्ष्यालाई नकार्ने प्रेम

६. अवज्ञालाई नकार्ने आज्ञापालन

७. अस्वीकारलाई नकार्ने अनुसरण

८. अल्लाहबाहेक पूजिने वस्तूहरूको इन्कार

**यी प्रतिबन्धहरूलाई निम्नलिखित दुईटा श्लोकहरूमा जम्मा गरिएको छ:**

ज्ञान, विश्वास, शुद्धता र तेरो सत्यता

प्रेम, अनुसरण र तीनको स्वीकार

आठौं अन्यचाहिं तेरो इन्कार हो

अल्लाहबाहेक अन्य वस्तुलाई जल्लाई पुजिन्छ ।

'मुहम्मदुर् रसूलुल्लाह' को साक्ष्य र मांगको उल्लेख गर्दै : हजूर (स॰अ॰व॰) लाई जे जाति बताएको विषयमा सत्य मान्नु, र जे जाति आदेश दिएका छन् त्यो विषयमा उहाँको अनुसरण, र जो जतिबाट मनाही गरी रोक्नु भएका छन् तिनबाट जोगिनु, र अल्लाह र उसको संदेष्टा (स॰अ॰व॰) को धर्मनीति अनुसार अल्लाहको उपासना गर्नु ।

फेरि शिक्षार्थीलाई इस्लाम धर्मका ५ बटा अरकान (आधारशिला) हरूमध्ये बाँकीलाई वर्णन गर्दै बताउनु । ती शेष अरकान (आधारशिला) हरू यी हुन्:

(१) सलाह (नमाज) अर्थात् नत्मस्तक प्रार्थना (उपासना)

(२) जकात अर्थात् धर्मदाय

(३) रमदान (इस्लामी नवौं) महीनाको व्रत

(४) यात्रा–व्ययको सामर्थ्य राख्ने व्यक्तिले अल्लाहको सम्मानित शान्ति घर काबाको हज (दर्शन) गर्नु ।

(तेश्रो पाठ)

# इमान (आस्था) का आधारशिलाहरू

**ती छौवटा हुन्:**

(१) अल्लाहमा आस्था राख्नु

(२) अल्लाहका देवदूतहरूमा आस्था

(३) अल्लाहका पुस्तकहरूमा आस्था

(४) अल्लाहका संदेष्टा दूतहरूमा आस्था

(५) परलोकको दिनमा आस्था

(६) र अल्लाहतर्फ बाट राम्रो र नराम्रो भाग्यमा आस्था राख्नु ।

## (चौंथों पाठ)

# तौहीद (एकेश्वरवाद) र शिर्क (मिश्रणवाद) का किसिम्-हरू

(क) तौहीद (एकेश्वरवाद) का किसिमहरू ती तीनवटा छन्:

१. *तौहीदुल् उलूहीय: (उपासना एकेश्वरवाद)*

२. *तौहीदुर् रोबूबीय: (प्रतिपालन एकेश्वरवाद)*

३. *तौहीदुल् अस्मा वस् सिफात (संज्ञा तथा गुण एकेश्वरवाद)*

१. ***तौहीदुल् उलूहीय:*** अल्लाह पवित्रमा यो आस्था राख्नु कि त्यो नै सत्य उपास्य र पूज्य हो, यो विषयमा कोहि उसको साझा छैन। अनि यो 'ला इलाह इल्लल्लाह' को अर्थ र तात्पर्य हो। यसको अर्थचाहिं 'वास्तविक उपास्य र पूज्य अल्लाह बाहेक कोहि छैन' हो। यसैले सलाह (प्रार्थना) र सौम (व्रत) इत्यादि जस्ता पूजा उपासनाहरू अल्लाह एउटा मात्रको लागि हुनु पर्छ तथा यसमा अर्काको लागि अलिकति हेरफेर पनि (वैध) मान्य हुँदैन।

२. ***तौहीदुर रोबूबीयः-*** अल्लाह पवित्रमा यो आस्था राख्नु कि त्यो सबै वस्तुको स्रष्टा (प्रतिपालक) र सबै वस्तुमा अधिकार गर्ने हो, साथै यस् बिषयमा त्यसको कोहि साझा छैन।

३. **तौहीदुल अस्मा वस् सिफात :-** अल्लाहको संज्ञा (नाम) र गुणहरूवारे पवित्र क़ुरआन र शुद्ध हदीस (संदेष्टा-वाणी) हरूमा जेजाति उल्लेख छ त्यसमा आस्था राख्नु, अनि एउटा अल्लाह मात्र त्यस योग्य छ भनी ती नाम र सज्ञालाई कुनै परित्याग, कमी-वेशी, परिवर्तन र अनुरूपता बिना त्यो पवित्र शक्तिको लागि अल्लाहको निम्न कथनानुसा व्यवहारिक रूपमा सिद्ध गर्नु:

**قل هو الله احد - الله الصمد - لم يلد - ولم يولد - ولم يكن له كفواً احد**

अर्थात (हे मुहम्मद), भनी देउ: त्यो अल्लाह एक हो, अल्लाह सर्वाधार परिपूर्ण हो, उसका कोहि सन्तान छैन र उकसैको संतानन छैन, तथा कोहि उसको तुल्य छैन। (सूरह समद सम्पूर्ण)

**सम्मानित प्रतिभाशाली शक्तिको कथन :**

**ليس كمثله شئ، و هو السميع البصير**

अर्थात् कुनै वस्तु त्यसको समान छैन, र त्यो अति सुन्ने तथा हेर्ने शक्ति हो। (सूरह शूरा-११)

केहि विद्वानहरूले तौहीदका दुईटा किसिमहरू बनाएका छन् र संज्ञा तथा गुण तौहीदलाई प्रतिपालन तौहीदमा नै शामेल गरेका छन्, र यसमा कुनै आपत्ति छैन किनकि यी दुईटै किसिममा उद्देश्य स्पष्ट हुन्छ।

## (ख) शिर्क (मिश्रण) का तीनबटा किसिमहरू छन:

**१. शिर्क अक्बर (महा-मिश्रण)**

**२. शिर्क अस्गर (तल्लो दर्जाको मिश्रण)**

**३. शिर्क ख़फी (गुप्त तथा अस्पष्ट मिश्रण)**

**शिर्क अक्बरः-** महा-मिश्रणचाहिंले आवश्यक तुल्याउँछ:

कर्मलाई सर्वनाश र नरकमा प्रवेश, त्यो मान्छेको लागि जसको मृत्यू यसै अवस्थामा भई सक्यो। जस्तोकि अल्लाहले भन्छ:

وَلَو أشْركوا لحبط عنهم ما كانوا يعملون

अर्थात् यदि तिनले मिश्रण गर्यो भन्ने तिनका कर्महरू नाश हुनेछन्। (सूरह अन्आम-८८)

**तथा त्यो पवित्र शक्तिको भनाइ छ:**

**مَا كانَ لِلمشركيـن أن يعمروا مسجد اللهِ شاهدين على أنفسهم بالكفر أولئك حبطت أعمالهم و في النار هم خالدون**

अर्थात् मिश्रणवादीको यो काम छैन कि तिनीहरू अल्लाहका मस्जिद (उपासना घर) हरूका रेखदेख गर्ने सेवक बनून् जबकि तिनीहरू स्वयं आफूमाथि इन्कारको साक्षी दिइ रहेछ्न, तिनका सारा कर्म नाश भइ सके तथा तिनले नरकमा सधैं बस्नु छ। (सूरह तौबा-१७)

र यदि त्यसै अवस्थामा मर्यो भन्ने उसलाई कदापि क्षमा गरीने छैन, अनि स्वर्ग त्यसमाथि हराम (अवैध) भई हाल्छ, जस्तोकि अल्लाह सम्मानित र प्रतापीको कथन छ:

**إن الله لا يغفرُ أن يشرك به و يغفر ما دون ذالك لمن يشاء**

अर्थात् निस्सन्देह अल्लाहले आफूसंग मिश्रण गरियोस भन्नेलाई क्षमा गर्ने छैन र यसबाहेक कसैलाई पनि रूचाएको खण्डमा क्षमा गर्नेछ। (सूरह निसा-४८)

**तथा त्यो पवित्र शक्तिले भन्यो:**

**إنه من يشرك بالله فقد حرم الله عليه الجنة ومأواه النار وما للظالمين من أنصار**

अर्थात् वास्तमा जसले अल्लाहको साझा बनायो भन्ने अल्लाहले उसमाथि स्वर्गलाई अवैध गरीदियो तथा उसको ठेगाना नरक हो, र अत्याचारीहरूको लागि कोहि सहयोग गर्ने छैन। (सूरह माएदा-७२)

**उदाहरण:** यसका प्रकारहरूमध्ये मृत तथा मूर्तिहरूको प्रार्थना र पुकार गर्नु, र तिनीहरूसित सहाय खोज्नु, र तिनीहरूको लागि भोग-प्रसाद मान्नु, र तिनीहरूको लागि बलि र पशू काट्नु तथा यसै प्रकारका अरू कर्महरू गर्नु हुन्।

**शिर्क असगर:-** त्यो हो जसलाई कुर्आन र हदीसको प्रमाणमा शिर्क (मिश्रण) भनिएको छ, तर त्यो शिर्क अक्बर (महामिश्रण) को श्रेणीबाट छैन। जस्तै, केहि कार्यहरूमा दिखावा र प्रदर्शन, अल्लाहबाहेक कसैको कसम लिनु, अथवा यो भन्नु कि जुन अल्लाहले इच्छा गरोस् वा अमूक व्यक्तिले चाहोस्। नबी करीम (महामहीम सम्मानित संदेष्टा मुहम्मद (स॰अ॰व॰) को आदेश छ:

"म तिम्रो बारेमा जुन कूराबाट सबभन्दा अधिक डरने गर्छु त्यो शिर्क अस्गार हो।" अनि यसको बारेमा हजूरसित सोधियो। हजुरले भन्नु भो, "त्यो दिखावा र प्रदर्शन हो।"

यसलाई इमाम अहमद, तबरानी र बैह्कीले महमूद पुत्र लबीद अन्सारीद्वारा राम्रो प्रमाणका साथ बयान गरेका छन्, तथा तबरानीले राम्रा प्रमाणहरूका साथ महमूद पुत्र लबीदद्वारा र उहाँले राफेअ पुत्र खदीजद्वारा र उहाँले संदेष्टा (मुहम्मद स॰अ॰व॰) द्वारा बयान गरेका छन्।

संदेष्टा मुहम्मद (स॰अ॰व॰) को कथन हो: 'जसले अल्लाहबाहेक कसैको कसम लियो भन्ने उसले शिर्क गर्यो।'

यसलाई इमाम अहमदले शुद्ध प्रमाणका साथ आदरणीय उमर पुत्र खत्ताबरजि॰ द्वारा बयान गरेको छ। तथा यसैलाई अबूदाऊद र तिर्मजीले शुद्ध प्रमाणका साथ आदरणीय पुत्र उमर रजियल्लाहु अन्होमाद्वारा बयान गरेका छन्। उहाँ सम्मानित सदेष्टाद्वारा बयान गर्नु हुन्छ कि हजूरले भनी बक्स्नु भो, "जसले अल्लाह अतिरिक्त कसैको शपथ लियो भन्ने उसले इन्कार गर्यो वा शिर्क गर्यो।" तथा सम्मानित संदेष्टा मुहम्मद (स॰अ॰व॰) को

आदेश हो, "यो न भन्नुस् जुन अल्लाहको इच्छा होस् र अमूक व्यक्तिले चाहोस् बरू यो भन्नुस् जुन अल्लाह ले चाहोस्- फेरि अमूक मान्छेले चाहोस् ।" यसलाई अबू दाऊदले शुद्ध प्रमाणका साथ होजैफा पुत्र यमान रजि॰ द्वारा बयान गरेको छ ।

शिर्क असगर नचाहिं को कारण बन्छ र नचाहिं सधैं नरकबासको कारण बन्छ । तर यो तौहीद (एकेश्वरवाद) को पूर्णताको प्रतिकूल हो जुनचाहिं आवश्यक छ ।

**शिर्क खफी:-** यो शिर्कको तेश्रो किसिम हो । यसको प्रमाण सम्मानित संदेष्टा मुहम्मद (स॰अ॰व॰) को यो कथन हो : 'के म तिमीहरूलाई त्यो कूरा न भनी दिऊँ जसको विषयमा म तिम्रो बारेमा मसीह दज्जाल (उपद्रवी अन्धकासुर) सितभन्दा पनिधेरै डरने गर्छु ।' हजूरका प्रतिष्ठित सहचरहरूले भन्नु भो, 'किन होइन हे अल्लाहका दूत !' हजूरले भन्नु भो, 'शिर्क खफी - त्यो यो हो कि मान्छेले नमाजको लागि उभ्दा आफ्नो नमाजलाई अति राम्ररी ढंगले पाठ गरोस् यसकारणले कि मान्छेहरू उसको तर्फ हेरीरहेका छन् ।' यसलाई इमाम अहमदले आफ्नो मुस्नद (प्रमाणित) भन्ने पुस्तकमा अबू सईद खुद्री रजि॰ द्वारा बयान गरेको छ ।

यो पनि हुन सक्छ कि शिर्कका मात्र दुई प्रकारहरू मानियोस - शिर्क अक्बर र शिर्क अस्गार। अनि शिर्क खफी या दुबैमा साझा छ।

शिर्क अक्बर खफीको उदाहरण द्वैवादीहरूको शिर्क हो, किनकि तिनीहरू आफ्ना झूटा विश्वासहरूलाई लुकाइ राख्थे तथा देखावा र आफ्नो प्राणको भयले इस्लामको प्रदर्शन गर्थे। शिर्क अस्गार खफी को उदाहरण देखावा र प्रदर्शन हो जस्तोकि महमूद पुत्र लवीद अन्सारी-को उपरोक्त हदीसमा तथा अबू सईद को हदीसमा यसको वर्णन आइसकेको छ, अल्लाह महान नै सन्मति प्रदान गर्ने हो।

## (पाँचौं पाठ)

# एहसान (सध्यान उपासना)

एहसान यो छ कि तपाईं अल्लाह महानको उपासना यस प्रकार गर्नुस् कि मानौं तपाईं उसलाई हेरीरहेका छौं, यदि यो सम्भव नहोस् भन्ने कम्तीमा तपाईं यो बुझनुस् कि उसले तपाईंलाई हेरी रहेको छ ।

(छैठौं पाठ)

# सलाह (नमाज) का शर्त र प्रतिबन्धहरू

१- इस्लाम (धर्म) हुनु

२- बुद्धि हुनु

३- बुझ्ने क्षमता हुन

४- शौच-क्रिया (शुद्ध हुनु)

५- फोहरलाई सफा गर्नु

६- गुप्तांगका लाई छोप्नु

७- समय हुनु

८- किबला (काबा) मुख हुनु

९- ध्यान गर्नु

## (सातौं पाठ)

# सलाह (नमाज) का अरकान अर्थात् आधारहरू

**यी १४ वटा छन:**

१- सामर्थ्य छ भन्ने उभ्नु

२- तहरीमाको तक्बीर अर्थात् पहिलो अल्लाहो अक्बर भन्नु

३- सुरतुल फातिहा (प्रार्थनाअंश) को पाठ गर्नु

४- रूकूअ गर्नु (निहुरिनु)

५- कौमा अर्थात् रूकूअपछि राम्ररी उभ्नु

६- सातौं अंगले सज्दा (नतमस्तक) हुनु

७- सज्दा (नतमस्तक) पछि राम्ररी उठ्नु

८- दुई सज्दाको मध्यमा जल्सा अर्थात् बस्नु

९- सबै अरकानलाई राम्ररी गर्नु

१०- सबै अरकानलाई क्रमशः गर्नु

११- अन्तिम तशह्हुद (तहीयात)

१२- अन्तिम रकातमा तशहहुदको लागि बस्नु

१३- अन्तिम कादः (बैठक) मा नबी (स॰अ॰व॰) माथि शान्ति प्रार्थना पठाउनु

१४- दायाँ तथा देब्रेपट्टी सलाम फेर्नु

(आठौं पाठ)

# सलाह (नमाज) का वाजिबात तथा आवश्यक कूराहरू

**यी आठवटा छन्:**

१- तहरीमाको तक्बीर* बाहेक बाँकी सबै तक्बीरहरू

२- एमाम (नमाज पढाउने अगुवा) र मुन्फरिद (एक्लै नमाज पढ्ने मान्छे) ले 'समेअल्लाहो लेमन हमेद:' भन्नु

३- एमाम, मुक्तदी (एमामको पछाडि नमाज पढने मान्छे) र एक्लै नमाज पढने मान्छेले 'रब्बना व लकल् हम्द' भन्नु

४- रूकूअमा 'सुब्हान रब्बियल अजीम' भन्नु

५- सज्दामा 'सुब्हान रब्बियल आला' भन्नु

६- दुबै सज्दाहरूको बीचमा 'रब्बिगफिरली' भन्नु

७- तीन वा चार रकात भएको नमाजमा पहिलो तशह्हुद (तहीयात)

८- तहीयात पढ्नको लागि बस्नु

---

* **तक्बीर भन्नेको 'अल्लाहो अक्बर' हो ।**

## (नवौं पाठ)

# तशहहुद (तहीयात) को वर्णन

**यो यसप्रकार हो :**

**"अत्तहीयातो लिल्लाहे वस्सलवातो वत्तय्यबातो, अस्सलामो अलैक अय्योहन्नबीयो व रहमतुल्लाही व बरकातोहु, अस्सलामो अलैना व अला एबदिल्लाहिस् सालेहीन, अश्हदो अल्लाएलाह इल्लल्लाहो व अश्हदो अन्न मोहम्मदन अब्दोहु व रसूलुह ।"**

अर्थात सबै मौखिक, शारीरिक र आर्थिक उपासनाहरू अल्लाहका लागि हुन् (अथवा सारा सम्मान र प्रतिष्ठाका शब्दहरू, हाम्रा नमाजहरू तथा सबै दानहरू अल्लाहका लागि हुन्), हे नबी, तपाईमाथि शान्ति, अल्लाहको कृपा तथा उसका विभूतिहरू होउन्, शान्ति होस् हामीमाथि र अल्लाहका सत्कर्मी भक्तहरूमाथि । म गवाही दिन्छु कि अल्लाहबाहेक कोहि उपास्य छैन र म गवाही दिन्छु कि मोहम्मद (स॰अ॰व॰) उसका भक्त तथा दूत हुन् ।

फेरि नबी (स॰अ॰व॰) माथि पवित्र दरूद (शान्ति-प्रार्थना) पढ्नु पर्छ त्यो यो हो :

**“अल्लाहुम्म सल्ले अला मोहम्मदिंव व अला आले मोहम्मदिन कमा सल्लैत अला इब्राहीम व अला आले इब्राहीम, इन्नक हमीदुम् मजीद । व बारिक अला मोहम्मदिंव व अला आले मोहम्मदिन कमा बारक्त अला इब्राहीम व अला आले इब्राहीम, इन्नक हमीदुम् मजीद ।”**

अर्थात हे अल्लाह, मुहम्मद (स॰अ॰व॰) तथा उनका परिवारमाथि शान्ति अवतरित गर्नुस, जसरी तिमीले इब्राहीम अलैहिस्सलाम र उनका परिवारमाथि शान्ति अवतरित गर्यो, निःसंदेह तिमी प्रशंसा र महानताको अधिकारी छौ । तथा विभूति अवतरित गर्नुस् मोहम्मद (स॰अ॰व॰)र उहाँका परिवारमाथि जुन प्रकारले इब्राहीम र उहाँका परिवारमाथि विभूति अवतरित गर्यौं, निःसंदेह तिमी प्रशंसा र महानताको अधिकारी छौ ।

फेरि कअ्दः अखीरः (अन्तिम बैठक) मा चिहानर नरकको यातना तथा मृत्यू र जीवनको उपद्रव अनि रूप विग्रेको दज्जाल (अन्धकासुर) को उपद्रवबाट अल्लाहसित शरण मागृनु पर्छ । फेरि रूचाएको जुनसुकै दुआ पढ्नु

पर्छ, विशेष गरेर मासूर: अर्थात् सुन्नतबाट सिद्ध दुआहरू, जस्तै:

**"अल्लाहुम्म अइन्नी अला जिक्रेक व शुक्रेक व हुस्ने इबादतिक, अल्लाहुम्म इन्नी जलम्तो नफसी जुल्मन कसीरन् वला यग्फेरूज् जोनूब इल्ला अन्त फग्फिर्ली मग्फेरतन मिन इन्दिक वर्हम्नी, इन्नक अन्तल् गफूरूर्रहीम ।"**

अर्थात् हे अल्लाह तिमी आफ्नो स्मरण गर्न, आफ्नो कृतज्ञता व्यक्त गर्न तथा आफ्नो उपासना गर्नमा सहायता गर्नुस्, हे अल्लाह मैले आफूमाथि अत्याचार गरेको छु, र तिमीबाहेक पापलाई कोहि क्षमा गर्न सक्दैन, तिमी मेरो पापलाई आफ्नो विषेश कृपाले क्षमा गरीदिनुस् तथा मसित कृपाको व्यवहार गरी बक्सनुस् । निस्सन्देह तिमी अति क्षमा गर्ने कृपालु छौ ।

प्रथम तशह्हुदमा चाहिं शहादतैनपछि जोह्र, अस्र, मग्रिब तथा एशामा तेश्रो रकातको लागि उभ्नु पर्छ । यदि नबी (स॰अ॰व॰) माथि दरूद पढोस् भन्ने बेस हुन्छ । यसबारेमा हदीस समान्य छ । अनि तेश्रो रकातको लागि उभ्नु पर्छ ।

## (दशौं पाठ)

# नमाजका सून्नतहरू

**नमाजका केहि सुन्नतहरू यसप्रकार छन्:**

१- इस्तिफ्ताह (प्रारभ) को दुआ अर्थात् 'सुब्हानक अल्लाहुम्म ......' पढ्नु

२- केयाम (उभाई) को स्थितिमा दायाँ हातको हतकेला (पञ्जा) लाई देब्रे हातमाथि हाली छातीमाथि राख्नु, तथा रूकूअबाट उभ्दा त्यस्तै गर्ने ।

३- तक्बीर तहरीमा (पहिलो तक्बीर), रूकूअभन्दा पहिले र पछि तथा (तीन वा चार रकात भएका नमाज-हरूमा) पहिलो बैठकबाट तेश्रो रकातको लागि उभ्दै औंलाहरू परस्परमा मिल्दो गरी दुबै हातहरूलाई काँध वा कानसम्म उठाउनु ।

४- रूकूअ तथा सज्दामा एकभन्दा बढी पटक तस्बीह (सुब्हान रब्बियल अजीम, सुब्हान रब्बियल आला) पढ्नु ।

५- रूकूअबाट उभेपछि (रब्बना व लकल्हम्द) का साथ थप सुन्नत दुआहरू मिलाउनु, तथा दुबै

सज्दाहरूको मध्यमा एकभन्दा बढी पटक (रब्बीग्फिर्ली) पढ्नु ।

६- रूकूअमा टाउकोलाई पीठ्यूँ बराबर राख्नु ।

७- सज्दामा दुबै बाहूहरूलाई कोखिलाबाट, भूँडीलाई तिघ्राहरूबाट र तिघ्राहरूलाई कुइनाहरूबाट छुट्टै राख्नु ।

८- सज्दामा दुबै कुइनाहरूलाई भुँइबाट उठाइ राख्नु ।

९- प्रथम बैठकमा र दुबै सज्दाहरूको बीचमा बस्दा देब्रे खुट्टालाई फिंजाएर त्यसमाथि बस्नु तथा दायाँ खुट्टालाई उभ्याइ राख्नु ।

१०- तीन वा चार रकातको नमाजमा अन्तिम बैठकमा तवर्रूक गर्नु अर्थात् आफ्नो चाकमाथि बस्नु, आफ्नो देब्रे गोडालाई दायाँ गोडामुनि गरी दायाँलाई उभ्याइ राख्नु ।

११- प्रथम तथा दोश्रो बैठकमा तहीयात पढ्दै अन्तिमसम्म चोर औंलाले संकेत गर्नु तथा दुआको बखतमा त्यसलाई हल्लाउनु ।

१२- प्रथम बैठकमा मुहम्मद (स॰अ॰व॰) माथि, उहाँका परिवारमाथि तथा इब्राहीमका परिवारमाथि कृपा तथा विभूति अवतरणको दुआ गर्नु ।

१३- अन्तिम बैठकमा दुआ गर्नु ।

१४- फज्र, जुमआ, ईदुल फित्र (व्रत तिहार), बकरईद (बलि तिहार), इस्तिस्का (वर्षा मांग्ने) नमाजहरूमा तथा मग्‌रिब र एशाको प्रथम दूई रकातहरूमा सस्वर (आवाजले) पाठ गर्नु

१५- जोह्र, असमा र मग्‌रिबको तेश्रो रकातमा तथा एशाको अन्तिम दूई रकातहरूमा बिस्तारै (मनमनै) पाठ गर्नु ।

१६- सूरह-फातिहाका साथ कुनै अरू सूरह पढ्नु, नमाजका वर्णित सुन्नतहरूबाहेक बाँकी सुन्नतहरूको ध्यान राख्नु पर्छ । जस्तै, रूकूअबाट उभ्दाखेरि (रब्बना व लकल्हम्द) भन्दा बढी पढ्नु - यो एमाम, मुक्तदी र एक्लै नमाज पढ्ने सबैको लागि सुन्नत हो तथा यसैप्रकारले रूकुअ गर्दा दुबै हातहरूलाई औंलाहरू फिंज्ने गरी घुँडामाथि राख्नु ।

## (एघारौं पाठ)

# नमाजलाई भंग गर्ने कूराहरू

**ती आठवटा छन्:**

१- जानी बुझी विचार गरी कूरो गर्नु, विर्सेर वा अज्ञानतावश कूरो गर्नाले नमाज भंग हुँदैन ।

२- हाँस्नु

३- खानु

४- पिउनु

५- गुप्तांग खुल्ला हुनु

६- किब्ला मूखबाट अत्याधिक हट्नु

७- नमाजमा लगातार अनावश्यक व्यवहार गर्नु

८- शुद्धता र पवित्रता समाप्त हुनु

(बाह्रौं पाठ)

# वजूका शर्त अर्थात् प्रतिबन्धहरू

**यी दसवटा छन्:**

१- मुस्लिम हुनु

२- बुद्धि हुनु

३- बुझने क्षमता हुनु

४- ध्यान गर्नु

५- वजू समाप्त हुन्जेलसम्म ध्यानलाई बाँकी राख्नु

६- वजूलाई आवश्यक तुल्याउने कुराहरू नहुनु

७- वजूभन्दा पहिले पानी वा माटोको डल्लोले शौच गर्नु

८- पानी पवित्र हुनु र त्यसले वजू मान्य (उचित) हुनु

९- त्यो वस्तुलाई छुट्टै पार्नु जसले पानी पहुंचने बाट रोक छ

१०- नमाजको वखत हुनु उसको लागि जसको वजू टिक्दैन ।

## (तेह्रौं पाठ)

# वजूका अनिवार्य कूराहरू

**यी छौवटा छन्:**

१–अनूहार धुनु, कुल्ला गर्नु र नाकमा पानी हाल्नु त्यसैमा शामेल छ ।

२– दुबै हातहरूलाई कुइनो सहित धुनु

३– पूरै टाउको र कानलाई पानीले मसह (स्पर्श) गर्नु

४– दुबै खुट्टाहरूलाई गोलीगाँठ सहित धुनु

५– क्रमले वजू गर्नु

६– वजूका अंगहरूलाई एकपछि अर्कालाई लगातार धुनु

* मुस्तहब (बेस) यो हो कि अनूहार, दुबै हात र दुबै खुट्टाहरूलाई तीन–तीन पटक धोइयोस् । यसै प्रकार तीन पटक कुल्ला गर्नु (मुखमा पानी हाली मुख राम्ररी सफा गर्नु) र नाकमा तीन पटक पानी हाल्लनु पनि मुस्तहब हो यदयपि अनिवार्यचाहिं मात्र एक पटक धुनु हो । सही हदीस अनुसार टाउको को मसहलाई दोहर्याउनु मुस्तहब छैन ।

## (चौधौं पाठ)

# वजूलाई भंग (समाप्त) पार्ने कूराहरू

**यी छौवटा छन् :**

१- दिशा-पिशबको मार्गबाट केहि निस्कनु

२- शरीरबाट कुनैपनि अशुद्ध वस्तु निस्कनु

३- निद्रा वा कुनै कारणले होश र चेतन समाप्त हुनु

४- अगाडि वा पछाडिको गुप्तांगलाई बिना पर्दा छुनु

५- ऊँटको मासू खानु

६- विधर्म हुनु

अल्लाह महानले हामी सबै मुसलमानलाई यसबाट जोगाउन् ।

* **महत्वपूर्ण द्रव्यष्ट:** मृतलाई स्नान गराउनाले सही कथनानुसार वजू भंग हुँदैन र अधिकांश विद्वानहरूको मत यही हो । तर स्नान गराउने मान्छेको हात मृतको गुप्तांगलाई पर्दाबीना स्पर्श गरेमा त्यसमाथि वजू आवश्यक हुनेछ । यस्तै पनि स्नान गराउने मान्छेको

लागि आवश्यक छ की त्यसले कुनै पर्दाबीना मृतको गुप्तांगलाई न छोओस् ।

यसै प्रकार पत्नीलाई छुनाले वजू कदापि भंग हुँदैन, चाहे छुने कार्य कामेच्छाले होस् वा कामेच्छाबीन होस् । यो कथन नै अधिक सही र मान्य हो, तर वीर्य- स्खलन न होस् किनकि नबी (स॰अ॰व॰) ले आफ्नो केहि पत्नीहरूलाई चुम्बन गर्नु भो तथा वजू नदोहर्याइकन नमाज पढ्नु भो ।

सूर: निसा र मायद: का आयतहरूमा أو لامستم النساء

(वा तिमीले स्त्रीहरूलाई छोएका हौं) बाट तात्पर्य विद्वानहरूको शुद्ध कथनानुसार मिलन अर्थात् सम्भोग हो, तथा यो कथन नै अब्दुल्लाह बिन अब्बास रजि॰ तथा अघि र पछिका धर्मवेत्ताहरूको एउटा जमाअतको कथन हो, सन्मति दिने अल्लाह हो ।

(पन्ध्रौं पाठ)

# सारा मुस्लिम समुदायले धार्मिक चरित्रले सुसज्जित हुनु

**ती चरित्रहरू मध्ये केहि निम्नलिखित हुन्:**

सत्य, ईमानदारी, पवित्रता, लज्जा र शरम, वीरता, उदारता, वफादारी, अल्लाहद्वारा निषेधित सबै वस्तुहरू-देखि टाढा हुनु, छिमेकीहरूसित राम्रो व्यवहार, सकेसम्म आवश्यकता भएका मान्छेहरू प्रति मदत र ध्यान, तथा यसका अतिरिक्त ती सबै सुचरित्र र सुव्यवहारहरू जसको वर्ण पवित्र कुर्आन र शुद्ध हदीसहरूमा गरिएको छ तथा जसको लागि तलकीन (बल) दिइएको छ ।

## (सोह्रौं पाठ)

# इस्लामी शिष्टाचारहरूको निरन्तर ख्याल

**ती मध्ये निम्नलिखित हुन्:**

सलाम गर्नु: हँसिलो-अनूहार भई व्यवहार गर्नु दायाँ हातले खानु-पिउनु, काम शुरू गर्दा 'बिस्मिल्लाह' (म शुरू गर्छु अल्लाहको नामले) पढ्नु, काम समाप्त गरेपछि 'अल्हम्दो लिल्लाह' भन्नु, छिंकने मान्छेको 'अल्हम्दो लिल्लाह' को जवाफमा 'यर्हमोकल्लाह' भन्नु, तथा मस्जिद र घरमा प्रवेश गर्दा र निस्कदा, यात्रा गर्दा, बाबू-आमा, सम्बन्धी, छर छिमेका र ठूला-सानासित व्यवहार गर्दा, विहे र नवजातलाई बधाई दिंदा, दु:ख परेको बेलामा शोक गर्दा तथा यसबाहेक लुगा र जुता लाउँदा र फुकाल्दा जस्ता सबै उपरोक्त स्थितिमा इस्लामी शिष्टाचारहरूको ख्याल राख्नु पर्छ ।

(सत्रहौं पाठ)

# शिर्क (मिश्रण) र पापहरूबाट जोगिनु र जोगाउनु

**तिनीहरूमध्ये सातबटा सर्वनाश पार्ने पापहरू यी हुन्:**

१- अल्लाहसित साझा ठहर्याउनु

२- जादू-टोना गर्नु वा गराउनु

३- कसैको नाहक हत्या गर्नु

४- ब्याज लिनु

५- अनाथको सम्पति खानु

६- युद्धबाट उम्कनु

७- इमान्दार र पवित्र तथा सरल-सीधी आईमाईहरू-माथि आक्षेप लगाउनु

यसै प्रकार पापहरूमा यी पनि शामेल छन्: बाबू-आमाको अवज्ञा, सर-सम्बन्धीहरूबाट सम्बन्ध विच्छेद गर्नु, झूठो साक्षी दिनु, झूठो कसम लिनु, छर-छिमेकीलाई

कष्ट पुर्याउनु, मान्छेहरूको ज्यान र सम्पत्ति तथा इज्जत र सम्मानमाथि अत्याचार गर्नु, लागू पदार्थ प्रयोग गर्नु, जूवा खेल्नु, तथा यसका अतिरिक्त निन्दा गर्नु, कूरो लगाउनु र अन्य यस्ता कूराहरू जसबाट अल्लाह महान र उसका संदेष्टा हजूर मुहम्मद (स॰अ॰व॰) ले मनाही गर्नु भएका छन् ।

(अठाह्रौं पाठ)

# मृतको क्रिया-कर्म र नमाज जनाजा अर्थात् अन्येष्ठि प्रार्थना

**यसको विवरण यसप्रकार छः**

## पहिलो- मर्ने बेलामा गर्नु पर्नेः

रोगीमाथि मृत्युका लक्षणहरू स्पष्ट भएपछि त्यसलाई **لا اله إلا الله** (लाइलाह इल्लल्लाह) को तलकीन (जप) गराउनु पर्छ। नबी (स॰अ॰व॰) को आदेश होः **'लक्केनू मौताकुम लाइलाह इल्लल्लाह'** अर्थात् आफ्ना मर्नेहरूलाई 'लाइलाह इल्लल्लाह' को सम्झना गराउनुस्। यसलाई एमाम मुस्लिमले आफ्नो सहीह नामक हदीस ग्रन्थमा उल्लेख गरेको छ। यस हदीसमा **'मौता'** बाट तात्पर्य ती मानिसहरू हुन। जसमाथि मृत्युका लक्षयहरू प्रकट भएर जाउन्।

## दोश्रो- मरेपछि गर्नु पर्नेः

कसैको मृत्यूको विश्वास भएपछि उसका आँखाहरू बन्द गरिदिनु पर्छ जस्तोकि सुन्नतबाट सिद्ध छ।

## तेश्रो- मृतलाई नुहाउनुः

मुसलमान मृतलाई स्नान गराउनु आवश्यक हो तर युद्धमा शहीद भएकालाई नचाहिं स्नान गराइयोस् र नचाहिं उसको नमाज जनाजा पढियोस्, बरू उसलाई त्यसै लुगामा गाडिनेछ । किनकि नबी (स॰अ॰व॰) ले ओहुदको युद्धमा शहीद भएकाहरूलाई नचाहिं स्नान गराउनु भो र नचाहिं तिनको नमाज जनाजा पढ्नु भो ।

## चौथो-मृतलाई नुहाउने तरीकाः

मृतको गुप्तांगलाई छोपियोस् अनि त्यसलाई अलिकति उठाइयोस् । उसको भुँडीलाई विस्तारै थिंच्नु पर्छ, त्यसपछि नुहाउने लुगाको टुक्रा वा त्यस प्रकारको कुनै वस्तुलाई आफ्नो हातमा बेरेर त्यसले उसलाई सफा गरियोस् । फेरि नमाजको वजू जस्तै उसलाई वजू गराइयोस् अनि उसको टाउको र दाह्रीलाई बयरको पात मिसिएको पानी वा त्यसै प्रकारको वस्तुले धुनु पर्छ । फेरि उसको दायाँ र देब्रे छुउलाई क्रमशः धुनु पर्छ । यसै प्रकारले दोश्रो र तेश्रो पटक नुहाउनु पर्छ । प्रत्येक पटक आफ्नो हातलाई उसको भुँडीमाथि फेर्नु पर्छ । यदि कुनै वस्तु निस्क्यो भन्ने त्यसलाई धुनु पर्छ अनि त्यो ठाउँलाई रूवा वा कुनै वस्तुले बन्द गरीदिनु पर्छ । यदि निस्कने प्रक्रिया रूकी रहेको छैन भन्ने शुष्म (गरम) माटो वा

आधुनिक चिकित्सा उपकरण, जस्तै टेप इत्यादिले बन्द गर्नु पर्छ ।

मृतलाई दोश्रो पटक वजू गराउनुस्, यदि तीन पटकमा सफा हुन सकेन भन्ने पाँच पटक वा सात पटक नुहाउनु पर्छ । फेरि उसलाई कुनै लुगाले सुकाउनु पर्छ तथा उसका छेउहरू र सज्दाका ठाउँहरूमाथि खुश्बू (सुगन्ध) लगाउनु पर्छ । यदि पूरै शरीरमा सुगध लगाइयो भन्ने बेस हुन्छ । उसको कफन (मृतलाई लाउने लुगा) लाई सुगन्धले धुनी दीनु पर्छ । यदि जुँगा र नङ॰ अधिक पलाएको छ भन्ने काटी दिनु पर्छ र यदि छाडियो भन्ने पनि कुनै आपत्ति छैन । कपाललाई काइँयोले कोर्नु पर्दैन, छेउ (कारवी) र नाभी तलको रौं काट्नु पर्दैन तथा नचाहिं खत्ना (लिंग-मुण्डन) गर्नु पर्छ किनकि यसबारेमा कुनै प्रमाण सिद्ध छैन । आइमाइको कपालको तीनवटा जुराहरू बनाई पछाडितिर गरीदिनु पर्छ ।

## पाचौं – मृतको कफनको लुगा:

मृतलाई तीनबटा सेतो लुगाहरूमा कफ्नाउनु (बेर्नु) उत्तम हुन्छँ जसमा कुर्ता र एमामा (पगडी) न होस्। मृतलाई त्यसमा बेर्नु पर्छ जुन प्रकारले नबी (स॰अ॰व॰) लाई गरियो। यदि कुर्ता, तहबन्द (लूँगी) र चादरमा कफ्नाइयो भन्ने पनि आपत्ति छैन। आइमाइलाई पाचँवटा लुगाहरूमा कफ्नाउनु पर्छ। कुर्ती, तहबन्द, दूईपट्टा र दूईवटा चादरहरूमा। नाबालिक बच्चा–लाईचाहिं एक देखि तीनसम्म कफन (को लुगा) दिनु पर्छ तथा सानी बच्चीलाई एउटा कुर्ती र दुईटा चादरहरूमा कफ्नाउनु पर्छ।

यसरी भन्ने हो भन्ने कफनमध्ये सबैको लागि मात्र एउटा लुगा आवश्यक छ जसले मृतलाई राम्ररी छोपन सकोस्। यदि मृत एहराम (हज्ज–उमरा) को अवस्थामा छ भन्ने उसलाई बयरको पानीले नुहाउनु पर्छ तथा उसकै तहबन्द (लूँगी) र चादरमा कफ्नाउनु पर्छ। यसबाहेक पनि कफन (लुगा) दिन सकिन्छ। उसको अनूहार र सिरलाई न छोपियोस् नचाहिं सुगन्ध लगाइयोस् किनकि प्रलयका दिन त्यो तल्बीया (लब्बैक अल्लाहुम्म लब्बैक) भन्दै उठ्ने छ, जस्तोकि हजूर (स॰अ॰व॰) को शुद्ध हदीसमा उल्लेख छ। यदि महीलाचाहिं यस अवस्थामा मरे की छ भन्ने उसलाई

अन्य महीलाहरू सरह नै कफ्नाइनेछ, तर उसलाई पनि सुगन्ध लगाइने छैन । साथै उसको अनूहारलाई नकाब (पर्दा) ले र उसको हातलाई पञ्जाले छोपिन छैन बरू अनूहार र दुबै हातहरूलाई कफनले छोप्नु पर्छ, जस्तोकि महीलालाई कफ्नाउने बयानमा वर्णित भई सकेको छ ।

## छैठौं – मृतको क्रियाकर्मका हकदारहरू:

मृतलाई नुहाउने, उसमाथि नमाज जनाजा पढ्ने र उसलाई दफ्नाउने सबभन्दा बढ़ी हक र अधिकार त्यो व्यक्तिलाई छ जसको बारेमा मृतले वसीयत गरेको होस्, फेरि बाबू, फेरि हजूरबा, फेरि छोराहरू तथा फेरि हजूरबा पट्टीका सम्बन्धीहरूमध्ये जुन अधिक नजीक होस् ।

महीलालाई नुहाउन सबभन्दा बढी हक तयो महीलाको हो जसको बारेमा मृत महीला ले वसीयत गरेकी होओस्, फेरि आमा, फेरि हजूरआमा तथा फेरि सम्बन्धी महीलाहररूमध्ये जुन अधिक नजीक परोस् ।

पति-पत्नीमध्ये कसैले पनि एक-अर्कोलाई नुहाउन सक्छ किनकि आदरणीय अबू बक्र रजि॰ लाई उहाँकी आदरणीया पत्नीले नुहाउनु भएकी थिइन् तथा आदरणीय अली रजि॰ ले आफ्नो पत्नी आदरणीया फातिमा रजि॰लाई नुहाउनु भएका थिए ।

## सातौं – नमाज जनाजा पढ्ने विधि:

यो नमाज पढ्ने तरीका यो छ कि चारवटा तक्बीर (अल्लाहो अक्बर) हरू भनियोस् । पहिलो तक्बीरपछि सूरह फातिहा पढियोस्, यदि यसका साथै कुनै सानो सूरह व एउटा–दुइटा आयतहरू पढियोस् भन्ने वेस हुन्छ जस्तोकि आदरणीय इब्ने अब्बास रजि॰ द्वारा सही हदीसमा वर्णित छ । फेरि दोश्रो तक्बीर भनी नमाजमा तशहहुदको अवस्थामा दरूद पढ़े झै नबी (स॰अ॰व॰) माथि दरूद पढ्नु पर्छ । त्यसपछि तेश्रो तक्बीर भनेर यो दुआ पढ्नु पर्छ :

**"अल्लाहुम्मग् फिर् लेहय्यना व मय्यतेना, व शाहेदेना व गाएबेना, व सगीरेना व कबीरेना, व जकरेना व उन्साना । अल्लाहुम्म मन् अहयय्तहु मिन्ना फअहयेही अलल् इस्लाम, व मन तवफ्फैतहु मिन्ना फतवफ्फहु अलल् ईमान । अल्लाहुम्मग् फिर् लहु वर्हम्हो, व आफेही व आफो अन्हो, व अक्रिम नोज़ोलहु, व वस्सेअ् मद्खलहु, वग्सिल्हो बिल्माए वस् सल्जे वल् बर्द, व नक्केही मिनल् खताया कमा योनक्कस् सौबुल् अब्यदो मेनद् दनस्, व अब्दिलहो दारन् खैरन् मिन दारेही, व अहलन खैरम् मिन् अहलेही । वद्खिल्हुल् जन्नत व**

**अइज्हो मिन अजाबिल् कब्रे व अजाबिन्नार, वफ्सह लहु फी क़ब्रेही, व नव्विर लहु फीह। अल्लाहुम्म ला तह्रिम्ना अज्रहु वला तोदिल्लना बादहु।"**

अर्थात् हे अल्लाह ! हाम्रा जीवित र मृत, उपस्थित र अनुपस्थित, साना र ठूला, पुरूष र महिला सबैलाई क्षमा गरी देऊ। हे अल्लाह ! हामीमध्ये जसलाई तिमी जीवित राखौ भन्ने त्यसलाई इस्लाममाथि जीवित राखौ तथा जसलाई मृत्यु देऊ भन्ने इमानमाथि देऊ। हे अल्लाह ! यो मृतलाई क्षमा गरी देउ, यसमाथि कृपा गरौ, यसलाई शान्तिमा राखौ र यसलाई माफ गरी देउ, यसको ठेगानालाई सम्मानित बनाऔ, यसको प्रवेश स्थानलाई फराकिलो बनाइ देउ, तथा यसलाई पानी, बर्फ र शीतले सफा गरी देउ र यसलाई पाप र त्रुटिहरूबाट यसरी सफा-सुग्धर गरी देउ जसरी सेतो लुगा फोहर मैलाबाट सफा भएर जान्छ। यसलाई उसको घरभन्दा राम्रो घर प्रदान गरौ र उसको पत्नी-भन्दा राम्री पत्नी प्रदान गरौ, यसलाई स्वर्गमा प्रवेश गराऔ, तथा यसलाई चिहान र नरकको यातना बाट शरणमा राखौ, र

यसको चिहानलाई फराकिलो पारी प्रकाशित गरौ। हे अल्लाह ! यसको प्रतिफलबाट हामीलाई वञ्जित न गरौ तथा यसपछि हामीलाई पथ- भ्रान्त न बनाऔ।

यसपछि चौथों तक्बीर भनेर दायाँपट्टी एउटा सलाम फेर्नु पर्छ।

मुस्तहब (राम्रो) यो हुन्छ कि प्रत्येक तक्बीरका साथ रफअ यदैन गर्नु अर्थात् हातहरूलाई उठाउनु पर्छ। यदि मृतचाहिं महीला छ भन्ने **"अल्लाहुम्मग् फिर्लहा"** भन्नु पर्छ (अर्थात स्त्रीलिंग प्रयोग गर्नु पर्छ), यदि दुईटा जनाजाहरू छन् भन्ने **"अल्लाहुम्मग् फिर्लहोमा"** र दुईभन्दा बढी भएमा **"अल्लाहुम्मग् फिर्लहुम"** भन्नु पर्छ। यद् नानी (बच्चा) को जनाजा छ भन्ने क्षमाको दुआको सट्टामा यो भन्नु पर्छ:

**"अल्लाहुम्मज् अल्हो फरतौं व जुखरन् लेवालेदैहे व शफीअन् मुजाबन। अल्लाहुम्म सक्किल बेही मवाजीनहुमा, वअज़िम बेही उजूरहुमा, व अल्हिक्हो बे सालहिल मूमेनीन, वज् अल्हो फी केफालते इब्राहीम अलैहिस् सलातो वस्सलाम, व क़ेही बे रहमतेक अजाबल् जहीम।"**

अर्थात हे अल्लाह ! यसलाई उसको बाबूआमाको लागि अगुवा र परलोकको भण्डार बनाउ तथा यस्तो सिफारिश (प्रस्तावना) गर्ने बनाइ देउ जसको सिफारिश स्वीकार गरियोस्। हे अल्लाह! यसको माध्यमले तिनी दूबैका सत्कर्म-तुलालाई गहूौं गरी देउ, तथा यसको माध्यमले तिनी दूबैलाई ठूलो प्रत्युपकार प्रदान गरौ तथा यसलाई सत्कर्मी ईमान्दारहरूका साथ सम्मिलित गरी देउ र यसलाई इब्राहीम अलैहिस्सलामको संरक्षणमा शामेल गरी देउ अनि यसलाई आफ्नो दया-कृपाले नरकको प्रकोपबाट बचाउ।

सुन्नत यो छ कि एमामले पुरूष मृतको टाउकोको सामुन्ने तथा महीलाको कम्मरको सामुन्ने उभ्नु पर्छ, तथा यदि एकै साथ धेरै जनाजाहरू जम्मा छन् भन्ने पुरूषलाई एमामको नजीक र महीलालाई किब्लाको नजीक राख्नु पर्छ। यदि त्यसमा बच्चाहरू पनि छन् भन्ने बच्चालाई महीलाभन्दा पहिले फेरि महिलालाई अनि बच्चीलाई राख्नु पर्छ। बच्चाको टाउकोचाहिं पुरूषको टाउकोको बराबरीमा तथा महीलाको कम्मर पुरूषको टाउकोको बराबरीमा हुनु पर्छ। यसै प्रकारले बच्चीको टाउको महिलाको टाउकोको बराबरीमा हुनु पर्छ। नमाज जनाजा पढ्ने सबै मान्छेले एमामको पछाडि उभ्नु पर्छ, यदि कसैले एमामको पछाडि ठाऊँ पाएन भन्ने एमामको दायाँपट्टी उभ्नु पर्छ।

## आठौं- मृतलाई दफ्नाउने (गाड्ने) विधि:

बेस यो हुन्छ कि मान्छेको कम्मर बराबर चिहानलाई गहिरो खन्नु पर्छ तथा क़िबला तर्फ त्यसमा लेहद (गुपफा) बनाइयोस् । मृतलाई समाधि (कब्र) मा उसको दायाँ छेउमाथि राख्नु पर्छ र कफनका बन्धनहरू खोली दिनु पर्छ । त्यसलाई झिक्नु पर्दैन बरू त्यस्तै छाडी दिनु पर्छ । मृतको अनूहारलाई खुल्ला छाड्नु पर्दैन त्यो पुरूष होस् वा महिला । फेरि कब्रलाई काँचो ईँटाहरूले बन्द गरी दिनु पर्छ र त्यसमाथि गिलो माटो लगाइ दिनु* पर्छ जसमाकि आफ्नो ठाउँमा जम्न जाओस् र माटोबाट बचत होस् । यदि त्यस्तो ईटांचाहिं उपलब्ध छैन भन्ने तख्ता वा ढुँगो वा लकडी प्रयोग गर्नु पर्छ ताकि माटो खस्नबाट सुरक्षित रहोस् । यसपछि कब्रमाथि माटो हाल्नु पर्छ, यस बखतमा यो भन्न राम्रो हुन्छ: **"बिस्मिल्लाहे व अला मिल्लते रसूलिल्लाह** ।" कब्रलाई एक बित्ता जति बराबर उँचो गर्नु पर्छ । यदि साना-साना ढुँगाका टुक्राहरू उपलब्ध छन् भन्ने त्यसमाथि हालेर पानीको छिडकाव गरीदिनु पर्छ । दफन गर्ने मान्छेहरूले कब्रको नजीक उभेर मृतको लागि प्रार्थना गर्नु पर्छ, किनकि नबी करीम (स॰अ॰व॰) मृतलाई दफनाएपछि त्यसको नजीक उभेर भन्ने गर्थे:

**"इस्तग्फेरू लेअखीकुम वस्अलू लहुत्तस्बीत्, फइन्नहुल् आन युस्अलो ।"**

अर्थात् आफ्नो भाईको लागि क्षमाको प्रार्थना गर्नुस् र उसको लागि स्थिरताको कामना गर्नुस्, किनकि अहिले उससित प्रश्न हुनेछ ।

## नवौं-नमाज जनाजा पाउन नसकेको मान्छेले गर्नु पर्ने:

जसले नमाज जनाजा पढ्न सकेन भन्ने त्यसको लागि उचित र मान्य हो कि दफन-क्रियापछि नमाज पढोस्, किनकि नबी करीम (स॰अ॰व॰) ले यस्तो गरेको छन्। तर यसो गर्नु एक महीना भित्रमा हुनु पर्छ। एक महीनाको अवधि नाघी सकेको छ भन्ने नमाज जनाजा कब्रमाथि पढ्नु उचित र मान्य छैन, किनकि नबी करीम (स॰अ॰व॰) बाट यो सिद्ध छैन कि हजूरले मृतको दफन-क्रियाकर्मको एक महीनापछि कुनै कब्रमाथि नमाज पढ्नु भो।

## दसौं–मृतको परिवारको लागि खानाको बन्दो-बस्त मिलाउनु:

मृतको परिवारको मान्छेहरूको लागि खानाको प्रबन्ध गर्नु उचित छैन। सुप्रख्यात सहाबी (दूत–सहचर) जरीर बिन अब्दुल्लाह अलबजलीद्वारा बयान गरियको छ:

**"कुन्ना नउद्दुल इज्तेमाअ एला अहलिल् मय्यते व सुन्अतुत् तआमे बादद् दफने मेनन् नेयाह: ।"**

अर्थात् मृतलाई दफन गरेपछि मृतको परिवार कहाँ जम्मा हुनु र खाना तयार गर्नूलाई हामी शोक मनाउनुमा गणना गर्थे। यसलाई एमाम अहमदले राम्रो प्रमाणका साथ उल्लेख गरेको छ।

स्वयं आफ्नो वा अतीथि पाहुनाहरूको लागि खाना तयार गर्नमा कुनै आपत्ति छैन। सम्बन्धी र छिमेकीहरूले मृतको परिवारको लागि खाना तयार गर्नु पर्छ, किनकि आदरणीय जाफर बिन अबू तालिबको सीरियामा भएको मृत्यूको समाचार सुन्दाखेरि हजूर (स॰अ॰व॰) ले आफ्नो परिवारलाई उक्त जाफरको परिवारको लागि खानाको बन्दोबस्त मिलाउन आदेश गर्नु भो अनि भन्नु भो:

**"इन्नहुम अताहुम् मा यश्गोलोहुम् ।"**

अर्थात उनीहरूलाई पुगेको पीडाले उनीहरूलाई अवाक् बनाई दिएको छ ।

तर यसमा कुनै आपत्ति छैन कि मृतको परिवारले आफूकहाँ आएको खानामा आफ्नाछिमेकीहरूलाई शामेल गरून् तथा मेरो ज्ञानानूसार यसको लागि धर्म–शास्त्रमा समयको निर्धारण छैन ।

## एघारौं-शोक मनाउनुः

कुनै आइमाइले मृतमाथि तीन दिनभन्दा बढी शोक मनाउनु उचित र मान्य छैन । तर आफ्नो लोग्नेको मृत्यूमाथि चार महीना दस दिन शोक गर्नु आवश्यक हो । यदि महीला गर्भवति छ भन्ने त्यसको म्याद बच्चा जन्मनुसम्म हुनेछ, जस्तोकि नबी करीम (स०अ०व०) को सही हदीसबाट प्रमाणित छ। तर पुरूषको लागि आफ्नो कुनै सम्बन्धी आदिको मरणमाथि शोक मनाउनु उचित र मान्य छैन ।

## बाह्रौं तथा अन्तिम-समाधीस्थलको दर्शन:

पुरूषहरूले समाधीगत भएकाहरूको लागि प्रार्थना (दुआ) गर्न, तिनका लागि शान्तिकामना गर्न तथा मृत्यू र त्यसपछिको अवस्थालाई स्मरण गर्न समय समयमा समाधीस्थल जानु पर्छ। नबी करीम (स॰अ॰व॰) को आदेश छ:

**"ज़ूरूल् कोबूर, फइन्नहा तोजक्केरोकुमुल् आखिरह।"**

अर्थात समाधी (चिहान) को दर्शन गर्नुस् किनकि त्यसले तिमीलाई परलोकको सम्झना गराउँछ।

यस हदीसलाई एमाम मुस्लिमले आफ्नो 'सहीह' नामक ग्रन्थमा उल्लेख गरेको छ।

नबी करीम (स॰अ॰व॰) ले आफ्नो माननीय सहचर-हरूलाई सिकाउने गर्थे कि तिमीले समाधीस्थल गएपछि यसो भन्नुस्:

**"अस्सलामो अलैकुम अहलद् देयारे मिनल् मूमेनीन वल् मुस्लेमीन, व इन्ना इन् शाअल्लाहो बेकुम् लाहेकून। नस्अलुल्लाह लना व लकुमुल् आफियत व यर्हमुल्लाहुल् मुस्तक्देमीन मिन्ना वल् मुस्ताखेरीन।"**

अर्थात् हे यस स्थलीका इमान्दार र मुसल्मानहरू, तिमीहरूमाथि शान्ति होस्, तथा हामी पनि ईश्वरेच्छाले तिमीहरूसित भेंटनेवाला छौं। अल्लाहसित आफ्नो र तिम्रोलागि सुखको कामना गर्छौं, तथा अल्लाह महानले हामीमध्ये अघि गएका र पछि जाने सबैहरूमाथि दया र कृपा गरोस्।

आइमाइले समाधीस्थल जानु मनाही छ, किनकि नबी करीम (स॰अ॰व॰) ले समाधी जाने महीलाहरूमाथि धिक्कार गरेको छ अनि यसकारणले गर्दा पनि कि त्यहाँ गएमा भ्रष्टाचारको सम्भावना हुन्छ। साथै तिनीहरूमा धैर्य पनि थोरै हुन्छ। यसै प्रकार महीलाहरूलाई जनाजा (मलामी जाने) पछि समाधीस्थलसम्म जानु पनि निषेध छ, किनकि रसूल (स॰अ॰व॰) ले महीलाहरूलाई पनि यसबाट मनाही गर्नु भएका छन्। तर मृतमाथि मस्जिद र ईदगाह (तिहारस्थान) मा नमाज जनाजा (अन्येष्ठि-प्रार्थना) पढ्न पुरूष र महीला दुबैको उचित र मान्य छ।

و صلى الله وسلم على نبينا محمد و على آله و صحبه أجمعين

समाप्त

06/09/98



# الدروس المهمة لعامة الأمة

## (باللغـــة النيبالية)


لسماحة الشيخ

**عبدالعزيز بن عبد الله بن باز** (رحمه الله)

مفتي عام المملكة العربية السعودية

والرئيس العام لإدارة البحوث العلمية والإفتاء


## ترجمة

## محمد أبو الليث السلفي


١٠/ ١٤٢٤ هـ

المكتب التعاوني للدعوة والإرشاد

٦٦

مطابع الحميضي